# सन् २०१९ नेपाल प्रवर्द्धन वर्षका रुपमा मनाइँदै

पर्यटन आर्थिक विकासको सम्वाहक मात्रै नभई समग्र मुलुकको विकासको सुनौलो अवसर पनि हो । अझ नेपाल जस्तो बहुभाषिक अनि बहु सांस्कृतिक सम्पदाको धनी राष्ट्रमा पर्यटन समृद्धि एवं विकासको कारक बन्न सक्दछ ।

समृद्ध नेपाल, सुखी नेपालीको नारासहित अघि बढिरहेको वर्तमान सरकारले २०७५/०७६ को नीति तथा कार्यक्रममा सन् २०२० मा २० लाख पर्यटक भित्र्याउने गरी विशेष कार्यक्रमको घोषणा गरेको सर्वविदितै छ । यस महान अभियानको सफलता मात्र सरकारको प्रयासले सम्भव छैन । नीजि क्षेत्र र डायस्पोराको भूमिका अझ महत्वपूर्ण छ ।

सन् २००३ मा आफ्नो स्थापना भएदेखि नै गैरआवासीय नेपाली संघले नेपालको आर्थिक विकासका लागि पर्यटन प्रवर्द्धनलाई मुख्य आधार बनाउनु पर्नेमा जोड दिंदै आएको छ । संघले सरकारको सन् २०२० लाई नेपाल भ्रमण वर्षका रुपमा मनाउने यस घोषणामा सहकार्य गर्ने प्रतिबद्धता जनाइसकेको छ ।

यसअघि नै यस संघको अग्रसरतामा कम्तीमा एक मित्र आफ्नो मुलुक पठाऊ, (Send home a friend ) गौतम बुद्ध नेपालमा जन्मिएका थिए,(Buddha was born in Nepal ), अतिथि देवो भवः लगायत धेरै प्रवर्धनात्मक कार्यक्रमहरु गरिहेको छ । आफू रहेको मुलुकबाट संघको प्रत्येक सदस्यले कम्तीमा एक जना पर्यटकलाई नेपाल भ्रमणका लागि प्रेरित गर्ने अभियान तथा डायस्पोरामा नेपाली महोत्सव लगायतका कार्यक्रम समेत सुरु भइसकेको अवगत गराउन चाहान्छौं ।

नेपाल संघीय ढांचामा प्रवेश गरिसकेको र केन्द्रदेखि प्रादेशिक तहसम्म पर्यटन प्रवर्द्धनका लागि नयां संरचनाहरुको निर्माण हुंदै गरेको अवस्थामा सरकारले घोषणा गरेको नेपाल भ्रमण वर्ष २०२० मा सहकार्य गर्न पाउनु हाम्रो लागि पनि गर्वको कुरा हो । यसै सन्दर्भमा, गैरआवासीय नेपाली संघले नेपाल भ्रमण वर्षको तयारी स्वरुप नेपाल प्रवर्द्धन वर्ष-२०१९ मनाउने घोषणा गरेको छ ।

यसका लागि गैरआवासीय नेपाली संघका अध्यक्ष भवन भट्टको अध्यक्षता र सह कोषध्यक्ष सोमनाथ सापकोटाको संयोजकत्वमा २ सय १३ सदस्यीय मूल समारोह समिति गठन गरिएको छ । यसै समितिको अगुवाईमा अन्य राष्ट्रिय समन्वय परिषद सम्मिलित उपसमिति समेत बनाउने तयारी भइरहेको छ । सरकारले थालेको अभियानलाई निरन्तरता दिंदै डायस्पोराले समेत अभियानलाई सफल पार्न नेपाल पर्यटन प्रवर्द्धन वर्ष २०१९ को थालनी गर्न लागेका हौं ।

जस अन्तर्गत डायस्पोराबाट पर्यटकलाई नेपाल भ्रमण गर्न उत्प्रेरित गर्ने, डायस्पोरामा नेपाली महोत्सव आयोजना गर्ने, विदेशीस्थित फेन्ड्स् अफ नेपाल लगायतका संघ-संस्थासंग मिलेर व्यापारिक कार्यशाला एवं प्रवर्द्धनात्मक कार्यक्रम गर्ने, नेपालीहरुद्वारा विदेशमा सञ्चालित रेष्टुरेन्ट, एवं अन्य व्यवसायिक निकायमा समेत नेपाललाई चिनाउने खालका सामाग्री राख्ने र कार्यक्रम गर्ने योजना हाम्रो छ । यस्तै गौतम बुद्ध र सगरमाथाको मुलुकको रुपमा नेपाललाई विश्व जगतमा बढी भन्दा बढी प्रचार गर्ने र डायस्पोरा मार्फत नेपालको सांस्कृतिक, धार्मिक, साहसिक, पर्यटन प्रवर्द्धन गर्ने कार्यक्रम हाम्रो छ ।

पर्यटन प्रवर्द्धनका लागि नेपाललाई चिनाउने मौलिक र सांस्कृतिक पहिचान झल्काउने खालका फोटो् प्रदर्शनी, खेलकुद प्रतियोगिता लगायतका कार्यक्रम आयोजना गर्ने तयारी हाम्रो छ । सरकारले पहिचान गरेका एक सय वटा गन्तव्य स्थानमा बढी भन्दा डायस्पोरा एवं बाहृय पर्यटक भित्र्याउने रणनीति अनुरुप विभिन्न कार्यक्रम गरिनेछ । यसका लागि संघले नेपाल सरकार, नेपाल पर्यटन बोर्ड, हान, टान, नाटा, नाटो, पाटा, जस्ता पर्यटनसंग सम्बन्धित नेपाली संघसंस्था, सम्बन्धित मुलुकस्थित नेपाली नियोग, राजदूताबास र अन्य सरोकारवालासाग सहकार्य गर्नेछ ।

सरकारले सुरु गरेको यस महान उत्सवमा हातेमालो गर्न पाउनु आफैंमा पनि गर्वको कुरा हो । हामीले थालनी गर्न लागेको नेपाल पर्यटन प्रवर्द्धन वर्ष २०१९ को अभियान सरकारको नेपाल भ्रमण वर्ष सन् २०२०अभियानको लागि समेत महत्वपूर्ण हुनेमा हामी विश्वस्त छौं । यसका लागि सरकार, तपाई सबै सरोकारवाला, सञ्चारकर्मी लगायतको साथ र समर्थनको अपेक्षा गरेका छौं ।
आउनुस् हामी सबै मिलेर यस महान अभियानलाई सफल पारौं । हाम्रा सबै हात एकै साथ भए हाम्रो समृद्धि अवस्यम्भावी छ ।

गैरआवासीय नेपाली संघ ।

मिति : २०७५/११/१५